नेपालको संविधान (२०७२) ले

# अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था

(व्याख्यात्मक टिप्पणीसहित)




लेखक तथा सङ्कलक

**अधिवक्ता सुदर्शन सुवेदी**



राष्ट्रिय अपाङ्ग महासंघ नेपाल
NFD-N

MYRIGHT
EMPOWERS PEOPLE WITH DISABILITIES

राष्ट्रिय अपाङ्ग महासंघ नेपाल
NFD-N

MYRIGHT
EMPOWERS PEOPLE WITH DISABILITIES

## नेपालको संविधान (२०७२) ले

# अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था

(व्याख्यात्मक टिप्पणीसहित)




लेखक तथा संकलक

**अधिवक्ता सुदर्शन सुवेदी**

नेपालको संविधान (२०७२) ले अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था (व्याख्यात्मक टिप्पणीसहित)

---


| | | |
|---|---|---|
| लेखन तथा सङ्कलन | : | सुदर्शन सुवेदी |
| प्रकाशक | : | राष्ट्रिय अपाङ्ग महासङ्घ - नेपाल, भृकुटीमण्डप, काठमाडौँ |
| प्रकाशन सहयोगी | : | नेपाल सरकार - महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालय,माइराइट र अपाङ्गता भएका व्यक्तिहरूको राष्ट्रिय साझा कार्यक्रम (सीआरपीडी) समिति |
| सर्वाधिकार | : | लेखन तथा सङ्कलनकर्तामा |
| सम्पादन | : | धातृप्रसाद सुवेदी |
| लेआउट | : | सागर प्रसाईँ |
| मुद्रण | : | भोजपुर सिद्धकाली छापाखाना, काठमाडौँ |
| प्रकाशन प्रति | : | ५००० प्रति |
| प्रकाशन वर्ष | : | २०७३ असार (सन् २०१६) |
| ISBN | : | 978-9937-0-1267-8 |

**व्यवस्थापिका-संसदको सभामुखको कार्यालय**

ओनसरी घर्ती
सभामुख

प.सं. २०७२/०७३
च. नं. ६१

व्यवस्थापिका-संसदको सभामुखको कार्यालय

फोन : ४२००१५९
फ्याक्स : ४२००१३७
सिंहदरबार, काठमाडौं, नेपाल ।

# शुभकामना

राष्ट्रिय अपाङ्ग महासङ्घ नेपालको पहलमा अधिवक्ता श्री सुदर्शन सुवेदीद्वारा लेखिएको नेपालको संविधान (२०७२) ले अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था (व्याख्यात्मक टिप्पणी सहित) को पुस्तक प्रकाशन गर्न लागेको थाहा पाउँदा ज्यादै खुशी लागेको छ । अपाङ्गता भएका व्यक्ति हाम्रो समाजमा सबैभन्दा पछाडि परेका समुदायभित्र गर्न आउँदछन् । राष्ट्रिय जनगणना २०६८ अनुसार कूल जनसङ्ख्याको १.९४ प्रतिशत अपाङ्गता भएका व्यक्तिहरू रहेका छन् र अझै पनि बहुसङ्ख्यक अपाङ्गता भएका व्यक्तिहरू शिक्षा, स्वास्थ्य, रोजगारी र सामाजिक सुरक्षाका अधिकार प्राप्ति गर्नबाट वञ्चित रहेको यथार्थ हामीसामु रहेको छ ।

अपाङ्गता भएका व्यक्तिहरूको हक अधिकार संरक्षण र संवर्द्धन गर्नका लागि विगतको संविधानसभा र व्यवस्थापिका-संसदले अहम् भूमिका निर्वाह गर्दै आएको छ । अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, २००६ लाई पारित गर्न पनि विगतमा व्यवस्थापिका-संसदले ठूलो भूमिका खेलेको थियो ।

गणतान्त्रिक नेपालको संविधानले नेपालको इतिहासमा पहिलो पटक अपाङ्गता भएका व्यक्तिहरूका अधिकारलाई बढीभन्दा बढी समावेश गरेको छ । यो संविधानको प्रमुख विशेषतामध्ये अपाङ्गता भएका नागरिकको अधिकारलाई सुनिश्चितता गर्नु पनि हो ।

यसै सन्दर्भमा नेपालको संविधानमा अपाङ्गता भएका नागरिकका हक हितसम्बन्धी के कस्ता व्यवस्थाहरू छन् भनी संविधानमा भएका व्यवस्थाहरू सबै तह र तप्काका सरोकारवालाहरू र आम जनसमुदायलाई सुसूचित गर्ने गरी प्रकाशन गर्न लागिएको नेपालको संविधान (२०७२) ले अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था (व्याख्यात्मक टिप्पणीसहित) को पुस्तकका लेखक तथा प्रकाशकलाई धन्यवाद प्रदान गर्दै सफतलताका लागि हार्दिक शुभकामना व्यक्त गर्दछु ।



ओनसरी घर्ती

राष्ट्रिय मानव अधिकार आयोग
National Human Rights Commission of Nepal
केन्द्रीय कार्यालय (Central Office)
हरिहर भवन, पुल्चोक, ललितपुर (Harihar Bhawan, Pulchowk, Lalitpur, Nepal)

च.नं. १८ २०७४/७५

# शुभ-कामना

राष्ट्रिय मानव अधिकार आयोग अपाङ्गता भएका नागरिकको हक अधिकार संरक्षण र प्रवर्द्धन गर्ने सन्दर्भमा निरन्तर क्रियाशील रहिआएको छ । अयोगले आफ्ना नीति तथा कार्यक्रममा अपाङ्गता भएका व्यक्तिका अधिकारलाई निरन्तर सम्बोधन गरेको छ । साथै, अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, २००६ लाई अनुमोदन तथा कार्यान्वयन गराउन र अपाङ्गतामैत्री भौतिक संरचना निर्माण गर्ने लगायतका अपाङ्गता र मानव अधिकारसम्बन्धी सरोकारका सवालहरूमा प्राथमिकताका साथ नेपाल सरकारलाई सिफारिस गर्ने/निर्देशन गर्ने लगायतका कार्य गरिरहेको छ ।

जन्मजात वा प्राकृतिकरूपमा कुनै दुर्घटना/प्रकोपका कारण, हिंसा तथा द्वन्द्वका कारण, कुनै रोगको सङ्क्रमणका कारण शारीरको कुनै पनि अङ्ग गुम्नु वा निस्क्रिय हुनुलाई अपाङ्गता भनिन्छ । नेपाल सरकार, राष्ट्रिय योजना आयोग अन्तर्गतको तथ्याङ्क विभागको २०६८ सालको जनगणना अनुसार कुल जनसङ्ख्याको १.९४ प्रतिशत अपाङ्गता भएका व्यक्तिहरू रहेका छन् । विश्व स्वास्थ्य सङ्गठनको भनाइ अनुसार कुल जनसङ्ख्याको २० प्रतिशतमा कुनै न कुनै किसिमको अपाङ्गपन रहेको जनाइएको छ । अपाङ्गतामात्र समस्या होइन, समाज र यसको संरचना अपाङ्गता भएका व्यक्तिहरूको समस्या हो । राज्यले नीति तथा योजनाहरू तर्जुमा गर्दा सम्पूर्ण समुदाय, तह तथा तप्काका नागरिकको अधिकार संरक्षण हुनुपर्ने कुरालाई ध्यान दिनुपर्दछ ।

नेपालको नयाँ संविधानले अपाङ्गता भएका नागरिकका अधिकारलाई विषेशरूपमा सम्बोधन गरेको छ । अपाङ्गता भएका नागरिकका शिक्षा, रोजागरी र सामाजिक न्यायको अधिकारलाई सुनिश्चित गरेको छ । संविधान वा कानुनमा कुनै पनि व्यवस्था भएरमात्र अधिकार प्राप्त हुन सक्दैन । ती अधिकार कार्यान्वयन हुनका लागि कार्यान्वयन गर्ने निकाय र हकवाला सबैलाई जानकारी हुनु अपरिहार्य हुन आउँछ । नेपालको संविधानमा अपाङ्गता भएका नागरिकका हक अधिकार संरक्षणमा के कस्ता व्यवस्था छन् भन्ने सूचना सबै तहमा पुऱ्याउने उद्‌देश्यले सरोकारवालाहरूले बुझ्नेगरी र आम जनसमुदायलाई सु-सूचित गर्ने उद्‌देश्यले राष्ट्रिय अपाङ्ग महासङ्घले प्रकाशन गर्न लागेको "नेपालको संविधान (२०७२) ले अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था (व्याख्यात्मक टिप्पणीसहित) पुस्तकका लागि शुभकामना व्यक्त गर्दछु ।

मिति २०७३/३/२६

(अनुप राज शर्मा)

अध्यक्ष

फोन नं. ५०१००१५, फ्याक्स नं. ००९७७-१-५५४७९७३, पो.ब.नं. ९१८२, काठमाण्डौं, नेपाल
Phone: +977 1 5010015, Fax: +977 1 5547973, G.P.O. Box: 9182, Kathmandu, Nepal
E-mail: nhrc@nhrcnepal.org, website: www.nhrcnepal.org

नेपाल सरकार
महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालय

सिंहदरवार, काठमाण्डौ
फोन नं. : ४२००३२८, ४२००१६८
४२०००८२, ४२००४१३
फ्याक्स: ४२००११६
इमेल : mail@mowcsw.gov.np
www.mowcsw.gov.np

पत्र संख्या :-
च.नं. :-

# शुभकामना

अपाङ्गता भएका नागरिक हाम्रो समाजका सबैभन्दा सीमान्तकृत नागरिक हुन् । अपाङ्गता भएका नागरिकलाई सक्षम र आत्मनिर्भर बनाउन र हक अधिकार पूर्णरूपमा दिलाउन महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालय दृढ छ ।

मन्त्रालयले अपाङ्गता भएका व्यक्तिहरूका लागि समुदायमा आधारित पुनःस्थापना कार्यक्रम, सीपमूलक रोजगार तथा स्वरोजगारमूलक कार्यक्रम, सहाराविहीन तथा अभिभावकविहीन अपाङ्गता भएका व्यक्तिहरूका लागि अवासीय सुविधा, बेसहारा अपाङ्गता भएका महिला तथा मनोसामाजिक समस्या भएका महिलाहरूलाई आवासको व्यवस्था, सहायक सामग्री उत्पादन र वितरण तथा अपाङ्गता भएका व्यक्तिहरूका संस्था र यस क्षेत्रमा कार्य गर्ने संस्थाहरूलाई अनुदान वितरण जस्ता कार्यक्रम गर्दै आएको छ । यसका अलावा अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि- २००६ र इन्चोन रणनीति कार्यान्वयन गर्न मन्त्रालय प्रतिबद्ध रहेको छ ।

अपाङ्गतासम्बन्धी समसामयिक ऐनको आवश्यकता महशुस गरी सम्बद्ध पक्षहरूसँगको परामर्शमा तयार गरिएको अपाङ्गतासम्बन्धी विधेयक स्वीकृतिको लागि व्यवस्थापिका-संसद्समक्ष प्रस्तुत भइसकेको छ । त्यस्तैगरी अपाङ्ग सहायता कोष नियमावली पनि तर्जुमाको क्रममा छ । अपाङ्गता भएका व्यक्तिहरूको अधिकार संरक्षण र प्रवर्द्धन गर्न राष्ट्रिय अपाङ्ग महासङ्घ-नेपालले स्थापनाकालदेखि गर्दै

आएको कामको मन्त्रालय प्रशंसा गर्दछ । महासङ्घले महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालयसँग निरन्तर सहकार्य गरी मन्त्रालयको सहयोगीको भूमिका निर्वाह गर्दै आइरहेको छ ।

संविधान निर्माणको क्रममा अपाङ्गता भएका व्यक्तिहरूका सवालहरू समावेश गराउन राष्ट्रिय अपाङ्ग महासङ्घ-नेपाललगायतका सरोकारवाला सबैको प्रयास निकै प्रशंसनीय रह्यो । संवैधानिक इतिहासमा अपाङ्गता भएका नागरिकको राजनीतिक अधिकार पहिलो पटक समावेश भएको अवस्था विद्यमान छ ।

नेपालको संविधानमा अपाङ्गता भएका नागरिकका सम्बन्धमा कस्ता व्यवस्थाहरू छन् ? भएका व्यवस्थाहरूलाई कसरी सरलरूपमा बुझ्ने भनी सबै तह र तप्काका नागरिकलाई सहजरूपमा बुझाउने भन्ने प्रमुख उद्‌देश्यका साथ अधिवक्ता श्री सुदर्शन सुवेदीले तयार पार्नुभएको **नेपालको संविधान (२०७२) ले अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था (व्याख्यात्मक टिप्पणीसहित)** पुस्तकको पाण्डुलिपि पढ्न पाउँदा मलाई खुसी लागेको छ । यस पुस्तकले संविधानमा भएका अपाङ्गता भएका व्यक्तिहरूको सवालका बारेमा पाठकवर्गमा जानकारी गराई संविधान कार्यान्वयन गर्न मद्‌दत मिल्नेछ भन्ने मैले महशुस गरेको छु ।

धन्यवाद ।

(मधु प्रसाद रेग्मी)

सचिव

# बधाई तथा शुभकामना

माइराइट स्वीडेनमा स्थापना भएर अन्तर्राष्ट्रिय विकास सहयोग क्षेत्रमा काम गर्ने अपाङ्गता भएका व्यक्तिहरूले स्थापना गरेका संस्थाहरूको मञ्च हो । माइराइटले सम्बन्धित देशका अपाङ्गता भएका व्यक्तिहरूले मात्र स्थापना गरेका संस्थाहरूसँगको सहकार्यमा अपाङ्गता भएका व्यक्तिहरूका हक अधिकार संरक्षण र प्रवर्द्धनका लागि काम गर्छ ।

माइराइट स्वीडिस अन्तर्राष्ट्रिय विकास सहयोग नियोगको आर्थिक सहयोग र आफ्नो मञ्च मातहत रहेका स्वीडिस सदस्य संस्थाहरूको आर्थिक तथा प्राविधिक सहयोगमा सन् १९९१ देखि नेपालमा निरन्तररुपमा कार्यरत छ । नेपालमा हाल बहिरा, सुस्तश्रवण, हेमोफिलिया, दृष्टिविहीन र न्यून दृष्टियुक्त, अटिज्म, बौद्धिक अपाङ्गतालगायत समग्र अपाङ्गता भएका व्यक्तिहरूका साझा सवालमा माइराइटले काम गर्दै आएको छ । यस क्रममा अपाङ्गता भएका व्यक्तिहरूले स्थापना गरेका संस्थाहरूको संयुक्त कार्यक्रम अन्तर्गत सीआरपीडी समितिले संविधानमा अपाङ्गता भएका व्यक्तिहरूका लागि व्यवस्था गरिएका प्रावधानहरूलाई समेटेर तयार गरेको हाते-पुस्तिका प्रकाशनका लागि सहकार्य गर्न पाउँदा माइराइट नेपाल आभार व्यक्त गर्न चाहन्छ ।

राष्ट्रिय अपाङ्ग महासङ्घ नेपाललगायत अपाङ्गता भएका व्यक्तिहरूले स्थापना गरेका अन्य नेपाली संस्थाहरूसँग नेपालको संविधान लेखनका क्रममा अपाङ्गता भएका व्यक्तिहरूका

अधिकारहरू समाहित गर्ने यात्रामा माइराइटको तर्फबाट पनि एक वा अर्को तवरले योगदान गर्न पाउँदा माइराइट र यसका सदस्य संस्थाहरूले आफूलाई गौरवान्वित महशुस गरेका छन् । यस क्रममा हामी माइराइटका तर्फबाट राष्ट्रिय अपाङ्ग महासङ्घ नेपाल, नेपाली अपाङ्गता अधिकारकर्मीहरू र संस्थाहरू, नेतृत्ववर्ग र सबै अपाङ्गता भएका व्यक्तिहरूलाई उहाँहरूको प्रयासहरूको उच्च प्रशंसा गर्दै हार्दिक बधाई ज्ञापन गर्दछौं ।

अन्त्यमा, मेहनतका साथ यो पुस्तिका तयार गर्ने अधिवक्ता सुदर्शन सुवेदी, जो आफैंमा एक अपाङ्गता भएको व्यक्ति, अपाङ्गता अधिकारकर्मी र अपाङ्गगता आन्दोलनको नेतृत्व हुनुका साथै नेपालको संविधान (२०७२) मा अपाङ्गता अधिकार सुनिश्चित गराउनका लागि अनवरतरुपमा लाग्नुभयो, उहाँलाई हार्दिक धन्यवाद व्यक्त गर्दछौं । यस क्रममा अपाङ्गता भएका ब्यक्तिहरूका संस्थाहरूको संयुक्त कार्यक्रमको निर्देशक समितिका सदस्य र त्यस अन्तर्गत रहेको सीआरपीडीको कार्यदलका सबै सदस्यमा हार्दिक आभार व्यक्त गर्दछौं ।

यस पुस्तिकाका माध्यमबाट पाठकवर्ग, विशेषगरी अपाङ्गता भएका व्यक्तिहरू र अपाङ्गता अधिकारकर्मीलगायत सम्बन्धित सबैलाई संवैधानिक प्रावधानहरूका बारेमा सु-सूचित हुने मौका प्रदान गरी सोहीबमोजिम हक, अधिकार र सुविधाहरू उपभोग गर्ने र गराउने कार्यमा सफलता मिल्नेछ भन्ने आशा गरेका छौं ।

**शिव रायमाझी**
राष्ट्रिय संयोजक
सञ्चालन

**सुजना शाक्य**
राष्ट्रिय संयोजक
आर्थिक र नियन्त्रण

MyRight (Shia), Country Office, PO Box: 14481, 153/36, Kholagal Marga, Lazimpat, Kathmandu, Nepal.
Tel: 977-1-4443361, Website: www.myright.se

# लेखन तथा सङ्कलनकर्ताको भनाइ

संविधान राज्यको मूल कानुन हो, जसले राज्य सञ्चालन र राज्यका सबै संयन्त्रलाई निर्देशन गरेको हुन्छ । मूल कानुन हुने भएको हुँदा संविधानमा उल्लेख भएका विषयवस्तुले महत्वपूर्ण अर्थ राख्छन् किनभने कानुनी राज्यको सिद्धान्तका आधारमा सञ्चालन हुने राज्यमा संविधानभन्दा माथि कोही पनि हुँदैन ।

नेपालमा यो संविधान अउनुभन्दा पहिले राज्यसत्ताका सञ्चालकहरूले गठन गरेको विज्ञ समूहबाट तयार मस्यौदालाई संविधानका रूपमा जारी गरिंदै अएको थियो । तर, नेपालको संविधान (२०७२) को मुख्य विशेषता भनेको एकातिर यो संविधान जनताले चुनेका जनताका प्रतिनिधिबाट लेखिएको हो भने अर्कोतिर यो संविधानभन्दा माथि कोही पनि छैन, सबैले पालना गर्नैपर्छ । त्यसैले यो संविधानलाई जनताको संविधान भन्ने गरिएको छ ।

नेपालको संविधान (२०७२) मा जे जति व्यवस्था छन्, ती सबै विगतका संविधानको तुलनामा निकै सकारात्मक र प्रगतिशील छन् । यसभन्दा अगाडिका संविधानमा अपाङ्गताका जे जति सवाल उल्लेख गरिएका थिए ती सबै राज्यका निर्देशक सिद्धान्तमा लगेर राखिन्थ्यो र 'राज्यले कानुन बनाएर लागू गर्नेछ' भनिन्थ्यो । साथै, राज्यका निर्देशक सिद्धान्तमा उल्लेख भएका विषयवस्तुहरू उपर कहीं कतै र अदालतमा उजुरी गर्न पाइनेछैन भनिन्थ्यो । त्यसो हुँदा 'एकातिर खाना खान दिने अर्कोतिरबाट खोस्ने' जस्तो हुन्थ्यो ।

विगतका संविधानसँग नेपालको संविधान (२०७२) लाई तुलना गर्दा

यसमा अपाङ्गता भएका नागरिकका सवाललाई मौलिक हकमै स्पस्टरूपमा उल्लेख गरिएको छ । जस्तैः शिक्षा, स्वास्थ्य, सामाजिक सुरक्षा, रोजागरीमा पहुँच, उच्च शिक्षासम्म निःशुल्क शिक्षाको व्यवस्था गर्नुपर्ने, साङ्केतिक भाषा र ब्रेललिपिमा पढ्न पाउने व्यवस्थाहरू संविधानमै तोकिएका छन् । त्यतिमात्र नभएर नेपालको संवैधानिक इतिहासमा पहिलो पटक यो संविधानले अपाङ्गता भएका नागरिकका हकमा राजनीतिक अधिकारलाई पहिचान दिंदै मूल प्रवाहीकरण गरेको छ ।

संविधानमा अपाङ्गता भएका नागरिकका सवाल समावेश गर्न सानो मेहनत र प्रयासले सम्भव भएको भने पक्कै होइन । संविधान निर्माण प्रक्रिया सुरु भएको दिनदेखि संविधान जारी नभएसम्म राष्ट्रिय अपाङ्ग महासङ्घ नेपालको नेतृत्वमा राष्ट्रिय अपाङ्ग महासङ्घका सदस्य संस्थाहरू, अपाङ्गता क्षेत्रका सरोकारवालाहरू, विभिन्न राजनीतिक दलमा आबद्ध अपाङ्गता भएका व्यक्तिहरूका भातृ सङ्गठनहरूले देशभरिबाट निरन्तर गरेको वकालतको प्रतिफलले गर्दा अपाङ्गतामैत्री संविधान जारी हुन सम्भव भएको हो । त्यतिमात्र नभई संविधानसभाका सदस्य (सभासद) र राजनीतिक दलहरूले पनि यो सवाललाई निकै सकारात्मक रूपबाट हेरी प्राथमिकता दिएको प्रतिफल पनि हो ।

जनताका कुनै पनि अधिकार संविधानमा लेखिएरमात्र हुँदैन, संविधानमा लेखिएका अधिकार पूर्णरूपमा कार्यान्वयन हुनुपर्दछ । संविधान कार्यान्वयन गर्न हकवाला, सरोकारवाला र संविधान कार्यान्वयन गर्ने पक्षहरूलाई संविधानमा के के विषयवस्तु समेटिएका छन् भन्ने कुराको पनि पूर्णरूपमा ज्ञान हुनुपर्दछ । त्यसैले नेपालको संविधान (२०७२) मा अपाङ्गता भएका व्यक्तिहरूका के कति अधिकार समेटिएका छन्, अनि अपाङ्गता भएका व्यक्तिहरूका अधिकारलाई कसरी बुझ्ने भन्ने सन्दर्भमा सबैलाई सहज होस् भन्ने उद्देश्यले पुस्तिकाको आकारमा नेपलाको संविधान (२०७२) ले अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था (व्याख्यात्मक टिप्पणीसहित) तयार पारिएको हो ।

यो पुस्तिक प्रकाशनका क्रममा मैले तयार पारेको पाण्डुलिपि हेरेर व्यवस्थापिका संसद्का सम्माननीय सभामुख ओनसरी घर्ती, राष्ट्रिय

मानव अधिकार आयोगका अध्यक्ष माननीय अनुपराज शर्मा, महिला बलबालिका तथा समाज कल्याण मन्त्रालयका सचिव श्रीमान मधुप्रसाद रेग्मीबाट शुभकामना–पत्र प्राप्त भएकोमा मलाई यो कार्य गरेकोमा निकै हौसला बढेको छ । भविष्यमा अरू यस्तै काम गर्ने उत्प्रेरण जागेको छ । शुभकामना प्रदान गर्नुहुने सम्माननीय सभामुख, राष्ट्रिय मानव अधिकार आयोगका माननीय अध्यक्ष र महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालयका सचिवज्यूमा मेरो व्यक्तिगत र प्रकाशकका तर्फबाट हार्दिक धन्यवाद व्यक्त गर्दछु ।

यो पुस्तिका तयार गर्न मलाई निरन्तर उत्प्रेरित गरिरहनुहुने माइराइटका राष्ट्रिय संयोजक (आर्थिक र नियन्त्रण) श्री सुजना शाक्य र माइराइटकै राष्ट्रिय संयोजक (संचालन) श्री शिव रायमाझी, आर्थिक र प्राविधिक सहयोग गर्ने माइराइटका साथै अपाङ्गता भएका व्यक्तिहरूको राष्ट्रिय साझा कार्यक्रम (सीआरपीडी) समितिलाई धेरै धेरै धन्यवाद ।

यसैगरी, राष्ट्रिय अपाङ्ग महासङ्घ नेपाल, नेपाल अपाङ्ग महिला सङ्घ, नेपाल नेत्रहीन सङ्घ, बौद्धिक अपाङ्गता अभिभावक महासङ्घ, राष्ट्रिय बहिरा महासङ्घ नेपाल, नेत्रहीन युवा सङ्घ, नेपाल हेमोफेलिया सोसाइटी, स्वावलम्बन जीवन पद्धति केन्द्, अटिजम केयर नेपाल सोसाईटी, नेपाल अपाङ्ग मानव अधिकार केन्द्र, राष्ट्रिय शारीरिक अपाङ्ग सङ्घ र नेपाल सुस्त श्रवण संघ यस पुस्तिक प्रकाशनका सहयात्री हुन् । सबैलाई हार्दिक धन्यवाद । साथै, भाषा शुद्धीकरण र सम्पादनलगायत प्रकाशनका आवश्यक सबै कार्यमा निरन्तर सहयोग गर्नुहुने पत्रकार श्री धातृप्रसाद सुवेदीलाई धेरै धेरै धन्यवाद ।

अन्त्यमा, यस पुस्तिकाले नेपालको संविधान (२०७२) लाई बुझ्न र अपाङ्गता भएका व्यक्तिहरूका सवालबारेमा जान्न पाठकवर्गलाई मद्दत गरी अपाङ्गता अधिकार प्राप्ति र कार्यान्वयनमा योगदान पुऱ्याएमा म आफ्नो मेहनत सार्थक भएको अनुभव गर्नेछु ।

अधिवक्ता सुदर्शन सुवेदी
२०७३ असार

# विषयसूची

## नेपालको संविधानका केही महत्वपूर्ण विशेषता

१. भाग २७, धारा ३०२ र अनुसूची ९ वटा रहेको यो संविधान लचिलो प्रकारको छ । संविधान परिवर्तन गर्नुपर्ने अवस्था आएमा विगतमा जस्तो आन्दोलन गरिरहनुपर्दैन, संसद्को दुईतिहाइ बहुमतबाट संविधान परिमार्जन गर्न सकिन्छ ।

२. संविधानले सङ्घीयतालाई आत्मसात गरेको छ । सात प्रदेशको समग्र खाका आएको छ । यसलाई परिमार्जन गर्न वा थपघट गर्न सकिने ठाउँ संविधानभित्रै छ । प्रदेशको नामाकरण प्रदेश संसद्को दुईतिहाइले गर्नेछ भने सीमाङ्कन आयोगमार्फत हुनेछ।

३. शासन प्रणालीको हकमा संवैधानिक राष्ट्रपति र कार्यकारी प्रधानमन्त्री रहने संसदीय प्रणाली अपनाइएको छ । राष्ट्रपतिको चुनाव प्रदेशसभा सदस्य र केन्द्रीय संसद्का सदस्यहरूले गर्छन् भने प्रधानमन्त्री संसद्बाट छानिन्छ ।

४. सरकारलाई अस्थिर बन्न नदिन प्रधानमन्त्रीविरुद्ध सुरुका दुई वर्षसम्म अविश्वासको प्रस्ताव ल्याउन नपाइने व्यवस्था गरिएको छ । प्रधानमन्त्रीले संसद् विघटन गर्न नपाउने व्यवस्था गरिएको छ ।

५. संसद्मा समावेशी प्रतिनिधित्व हुनेछ । मिश्रित निर्वाचन प्रणाली अपनाइएको छ । प्रतिनिधिसभा र राष्ट्रियसभा गरी दुई वटा सदन रहनेछन् । प्रतिनिधिसभामा प्रत्यक्ष निर्वाचित १६५ र समानुपातिक ११० सहित २७५ सदस्य हुनेछन् । राष्ट्रियसभामा

सात प्रदेशबाट निर्वाचित ५६ र राष्ट्रपतिबाट मनोनीत तीनसहित ५९ सदस्य हुनेछन्।

६. सङ्घ, प्रदेश र स्थानीय गरी तीन तहको राज्य संरचना हुनेछ । केन्द्रमा बढीमा २५ सदस्यीय मन्त्रिपरिषद् बन्नेछ । चुनाव हारेका व्यक्ति मन्त्री बन्न पाउँने छैनन् । प्रदेशसभा एक सदनात्मक हुनेछ ।

७. सात प्रदेशका कूल सांसद ५५० हुनेछन् । प्रादेशिक संसद्का कुल सदस्यको २० प्रतिशतमा नबढ्ने गरी प्रान्तीय मन्त्रिपरिषद् बन्नेछ । केन्द्रमा जस्तै प्रदेशमा पनि प्रत्यक्षतर्फ ६० र समानुपातिकतर्फ कोटामा ४० प्रतिशत सिट सङ्ख्या हुनेछ ।

प्रदेशसभाले आफ्नो राजधानी तय नगर्दासम्म नेपाल सरकारले तोकेको स्थानबाट कार्यसञ्चालन हुनेछ । संविधानमै केन्द्र, प्रदेश र स्थानीय सरकारको अधिकारक्षेत्र विभाजन गरिएको छ । प्रदेशसभाको निर्वाचन र प्रदेश सरकार नबन्दासम्म उनीहरूको अधिकार पनि केन्द्रले प्रयोग गर्ने सङ्क्रमणकालीन व्यवस्था गरिएको छ ।

८. संविधानतः नेपाल धर्मनिरपेक्ष राष्ट्र हुनेछ । तर, धर्मनिरपेक्षताको व्याख्या गर्दै भनिएको छ- धर्मनिरपेक्षता भन्नाले सनातनदेखि चलिआएको धर्म, संस्कृतिको संरक्षणलगायत धार्मिक, सांस्कृतिक स्वतन्त्रता बुझ्नुपर्ने छ ।

९. मौलिक हकसम्बन्धी वृहत् व्यवस्था गरिएको छ । महिला र दलितलाई विशेष आरक्षणको व्यवस्था गरिएको छ । शिक्षा, स्वास्थ्य, पर्यावरणलगायतका हकलाई मौलिक हक अन्तर्गत राखिएको छ । तर, यसको प्रयोग 'कानुनबमोजिम हुने' भनेर सङ्कुचन गरिएको गुनासा पनि नआएका होइनन् ।

१०. न्यायपालिका अन्तर्गत केन्द्रमा सर्वोच्च अदालत रहने छ भने सर्वोच्च अदालतमा संवैधानिक इजलास रहने व्यवस्था गरिएको छ । प्रदेशहरूमा उच्च अदालत रहनेछन् भने जिल्ला सदरमुकाममा जिल्ला अदालतहरू रहनेछन् ।

११. नागरिकतासम्बन्धी प्रावधानमा वंशजको नागरिकता लिने प्रयोजनका लागि आमा वा बाबुको प्रावधान राखिएको छ । मधेसीहरूका मागलाई पनि नागरिकतामा समेटिएको छ ।

१२. मधेसी, थारू, मुस्लिम, आदिवासी जनजातिका लागि छुट्टाछुट्टै आयोग बनाइने प्रावधान छ । सबै मातृभाषा राष्ट्रभाषा, सरकारी कामकाजको भाषा देवनागरी लिपिमा नेपाली भाषाको प्रयोग हुनेछ ।

१३. राष्ट्रिय जनावर गाईलाई राखिएको छ । राष्ट्रिय भण्डा र राष्ट्रिय गान यथावतै राखिएको छ ।

१४. स्थानीय निकायको हकमा सरकारले गठन गर्ने आयोगले एक वर्षभित्र स्थानीय निकायको पुनःसंरचना गर्नेछ भने त्यस अघि स्थानीय निकायमा अन्तरिम चुनाव गर्ने सङ्क्रमणकालीन व्यवस्था संविधानमा गरिएको छ ।

१५. चार वर्षका लागि निर्वाचित संविधानसभाका सदस्य बाँकी कार्यकालका लागि (बढीमा साढे तीन वर्ष) रूपान्तरित व्यवस्थापिका संसद्को सदस्यका रूपमा कायम रहनेछन् । तर, २०७४ साल माघभित्रै आम चुनाव घोषणा भएको अवस्थामा उम्मेदवारी मनोनयनका दिनसम्म मात्रै उनीहरूको पदावधि रहनेछ ।

१६. यो संविधान जारी भएको ७ दिनमा प्रधानमन्त्री, २० दिनमा सभामुख र एक महिनामा राष्ट्रपतिको निर्वाचन गर्ने सङ्क्रमणकालीन व्यवस्था संविधानमा छ । यी पदाधिकारीको चयनको तिथि संसद्को अधिवेशन चालू नरहेको अवस्थामा अधिवेशन सुरु भएको दिनबाट गणना हुनेछ । चालू अधिवेशन अन्त्य भएमा पनि संविधान जारी भएको सात दिनभित्रै अधिवेशन आह्वान गर्नुपर्ने सङ्क्रमणकालीन व्यवस्था छ ।

माथि उल्लेखित विषयवस्तु निकै उपयोगी भएकाले २०७२ असोज ३ गते १७:१२ मा प्रकाशित (२०७२ असोज ४ गते ११:१२ मा अद्यावधिक गरिएको) अनलाइन खवरबाट सभार गरिएको हो ।

# नेपालको संविधान (२०७२) ले अपाङ्गता भएका व्यक्तिहरूका हकमा गरेका व्यवस्था

(व्याख्यात्मक टिप्पणीसहित)

## नेपालको संविधान (२०७२) को प्रस्तावना (चौथो अनुच्छेद)

बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक तथा भौगोलिक विविधतायुक्त विशेषतालाई आत्मसात् गरी विविधताबीचको एकता, समाजिक सांस्कृतिक ऐक्यबद्धता, सहिष्णुता र सद्भावलाई संरक्षण एवं संवर्द्धन गर्दै वर्गीय, जातीय, क्षेत्रीय, भाषिक, धार्मिक, लैङ्गिक विभेद र सबै प्रकारका जातीय छुवाछूतको अन्त्यगरी आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने सङ्कल्प गर्दै,

**व्याख्यात्मक टिप्पणी :**

संविधान होस् वा अन्य कानुन, ऐन, नीति, नियमावली वा निर्देशिका आदिको प्रस्तावना सबैभन्दा महत्वपूर्ण हुन्छ । यही प्रस्तावनाले नै प्रस्तावनापछि लेखिने संविधान वा अन्य कानुनका विभिन्न प्रवधानलाई डोऱ्याएको हुन्छ । संविधान वा कानुनमा समावेश गरिने सबै व्यवस्था प्रस्तावनाको भावनाविपरीत हुनुहुँदैन । यो संविधान वा कानुन लेखनको सिद्धान्त हो ।

नेपालको संविधान (२०७२) को प्रस्तावनाको मुख्य विशेषता भनेको जनताका अधिकारलाई सबैभन्दा केन्द्रमा राखेर लेखिएको छ । संविधान बन्नुभन्दा अगाडि नागरिकले भोग्नुपरेका विभेदलाई आत्मसात गर्दै भविष्यमा यस्ता किसिमका विभेद भोग्नु नपरोस् अनि नदोहोरियून भनी प्रस्तावनामै राखिएको छ । हिजोका दिनमा जात, जाति, वर्ण, लिङ्ग, वर्ग, क्षेत्र, भूगोलका साथै शारीरिक अवस्थाका आधारमा जुन विभेद र दलन भयो, अब त्यस्तो विभेद र दलन नहोस् भनेर प्रस्तावनामै उल्लेख गरिएको छ ।

माथि उल्लेखित यस व्यवस्थाले अपाङ्गता भएका व्यक्तिहरूका सवाललाई पनि समेटेको छ । यो व्यवस्थाले गर्दा कसैले पनि अपाङ्गताका आधारमा कुनै पनि किसिमको विभेद गर्न वा अधिकारबाट वञ्चित गर्न वा गराउन पाउने छैन । यदि कोही कसैले त्यस्तो कार्य गरे/गराएमा कानुनबमोजिम सजायको भागिदार हुनुपर्ने छ ।

# भाग ३

# मौलिक हक

**मौलिक हक भनेको के हो ?**

नागरिक भएकै कारणबाट प्राप्त गर्ने अधिकारलाई मौलिक अधिकार भनिन्छ । यस्ता मौलिक अधिकार मानव अधिकारको सिद्धान्तसँग प्रत्यक्षरूपमा जोडिएका हुन्छन् । हरेक मानिसले राज्यको नागरिक भएर प्राप्त गर्ने मौलिक मानव अधिकारका सम्बन्धमा मानव अधिकारको विश्वव्यापी घोषणापत्रले पनि परिभाषित गरेको छ ।

नेपालको संविधान (२०७२) मा मौलिक हकमा ३२ वटा धारा रहेका छन् । मौलिक हक कसैका लागि बढी र कसैका लागि कम भन्ने हुँदैन । यो सबै नागरिकलाई बराबररूपमा लागू हुनेगर्छ । तर, अपाङ्गता भएका नागरिकका केही विशिष्ट अधिकार, जसलाई विशेष किसिमले सम्बोधन गर्नुपर्ने भएका कारणले गर्दा ८ वटा धारामा अपाङ्गता भएका व्यक्तिहरूसँग सम्बन्धित अधिकारलाई अपाङ्गता भएका नागरिक वा अन्य सीमान्तकृत नागरिकलाई सम्बोधन हुनेगरी उल्लेख गरिएको छ । ती व्यवस्थालाई निम्न अनुसार क्रमैसँग व्याख्या गरिएको छ ।

## धारा १८ : समानताको हक

### धारा १८ को उपधारा २ मा भएको व्यवस्था

सामान्य कानुनको प्रयोगमा उत्पत्ति, धर्म, वर्ण, जात, जाति, लिङ्ग, शारीरिक अवस्था, अपाङ्गता, स्वास्थ्यस्थिति, वैवाहिकस्थिति, गर्भावस्था, आर्थिक अवस्था, भाषा वा क्षेत्र, वैचारिक आस्था वा यस्तै अन्य कुनै आधारमा भेदभाव गरिने छैन ।

**व्याख्यात्मक टिप्पणी**

सबै मानिस कानुनका दृष्टिले समान हुन्छन् । कुनै पनि बहानामा राज्यले कसैलाई काखा र कसैलाई पाखा गरी भेदभाव गर्नु हुँदैन । एउटै राज्यभित्र बसोबास गर्ने वा रहने त्यस राज्यका नागरिकलाई कानुनद्वारा

एक मानिसलाई एउटा कानुन र अर्को मानिसलाई अर्को कानुन बनाएर फरक फरक अधिकार दिने, फरक फरक व्यवहार गर्ने गर्न पाइँदैन । यस्तो कार्य राज्यको संविधान, प्राकृतिक न्यायको सिद्धान्त र मानव अधिकारको सिद्धान्तभन्दा विपरीत हुन्छ ।

सामान्यतया कानुनका दृष्टिमा सबै नागरिक समान हुन्छन् भन्नेबित्तिकै सबै नागरिक समान हुनुपर्छ भन्ने मानव अधिकारको प्राकृतिक न्यायको सिद्धान्त हो । तर, हाम्रो समाजमा मानिसले मानिसलाई वर्ग, धर्म, वर्ण, उत्पन्ति, जातजाति, शारीरिक अवस्था आदिका आधारमा गर्ने सामाजिक विभेद अझै कामयमै रहेको छ । कानुनले यस्तो विभेद पूर्णरूपमा उन्मूलन गरिदिएको भए पनि व्यावहारिकरूपमा समाजभित्र हुने यस किसिमका विभेद एककिसिमले प्रथा वा परम्परा जस्तै जकडिएर बसेका छन् । यस्ता कुरालाई वर्तमान संविधानले पूर्णरूपमा अमान्य घोषणा गरेको छ ।

विशेषगरी अपाङ्ता भएका व्यक्तिहरूलाई अपाङ्गता भएकै आधारमा हाम्रो समाजमा विभेद गर्ने गरिएको छ । यस्ता किसिमका कुनै पनि विभेद नहुन् भन्ने मनसायले यो धाराको व्यवस्था गरेर अपाङ्ता भएका व्यक्तिहरूको सवाल समेटिएको हो ।

कुनै पनि अपाङ्गता भएका व्यक्तिलाई अपाङ्गता भएकै आधारमा विभेद वा वहिष्करणमा पार्न पाइने छैन । यदि यसो गरिन्छ भने त्यसका विरुद्ध न्यायिक निकाय अदालत वा अन्य अर्द्धन्यायिक निकायमा त्यसरी विभेदमा पर्ने व्यक्तिले न्यायका लागि विभेद गर्ने विरुद्ध उजुरी गर्न सक्छन् ।

## धारा १८ को उपधारा ३ मा भएको व्यवस्था

राज्यले नागरिकबीच उत्पत्ति, धर्म, वर्ण, जात, जाति, लिङ्ग, आर्थिक अवस्था, भाषा, क्षेत्र, वैचारिक आस्था वा यस्तै अन्य कुनै आधारमा भेदभाव गर्ने छैन ।

तर, समाजिक वा सांस्कृतिक दृष्टिले पिछडिएका महिला, दलित, आदिवासी, आदिवासी जनजाति, मधेशी, थारू, मुस्लिम, उत्पीडित

वर्ग, पिछडा वर्ग, अल्पसङ्ख्यक, सीमान्तकृत, किसान, श्रमिक, युवा, बालबालिका, ज्येष्ठ नागरिक, लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक, अपाङ्गता भएका व्यक्ति, गर्भावस्थाका व्यक्ति, अशक्त वा असहाय, पिछडिएको क्षेत्र र आर्थिकरूपले विपन्न खस आर्यलगायतका नागरिकको संरक्षण, सशक्तीकरण वा विकासका लागि कानुनबमोजिम विशेष व्यवस्था गर्न रोक लगाएको मानिने छैन ।

**व्याख्यात्मक टिप्णी**

लोकतन्त्रमा समानता र समताको निकै व्याख्या हुनेगर्छ । लोकतन्त्रमा समतामूलक समाज र राज्य हुनुभनेको त्यस राज्यले पूर्णरूपमा मानव अधिकारको पालना गरेको छ भन्ने बुझिन्छ । समाजमा सबै एकै प्रकारका मानिस हुँदैनन् । समाज रहेका कुप्रथा, कुसंस्कार, गलत परम्परा वा राज्यको विभेदकारी नीतिले गर्दा मानिस विभेद एवं हिंसाको चपेटामा पर्छन् । हाम्रो समाजमा सदियौंदेखि जात, जाति, शारीरिक अवस्था, लिङ्ग आदिका आधारमा विभेद हुँदै आएको छ । त्यस्तो विभेदका कारणले हाम्रो समाजमा नागरिकबीच पूर्णरूपमा आर्थिक, सामाजिकरूपले असमानता छ ।

उदाहरणका लागि कोही आर्थिक, सामाजिकरूपले निकै अगाडि हुन्छन् भने कोही अत्यन्त कमजोर अवस्थामा रहेका हुन्छन् । त्यसैले कमजोर वर्गलाई अगाडि ल्याउन वा उनीहरूको जीवनस्तर उकास्नका लागि राज्यले सकारात्मक विभेदको नीति अवलम्बन गर्नुपर्छ ।

यसै प्रसङ्गमा 'कानुनका अगाडि सबै समान' भन्ने सिद्धान्त हुँदाहुँदै पनि माथि उल्लेखित सवाल संविधान मस्यौदा गर्दा विधायकहरूले राखेका हुन् । यस्तो अवस्थामा समाजमा कमजोर वा सीमान्तकृत वर्गलाई निश्चित समयसम्मका लागि आरक्षण वा विशेष अधिकार वा सुविधा प्रदान गर्दै समतामूलक सिद्धान्तलाई अवलम्बन गर्दै उनीहरूलाई आर्थिक,

सामाजिक र सांस्कृतिकरूपमा अगाडि ल्याउन विशेष व्यवस्था गर्ने गरिन्छ । त्यसैले यो व्यवस्था गरिएको हो ।

अपाङ्गता भएका व्यक्ति हाम्रो समाजका आर्थिक, सामाजिक, राजनीतिक, सांस्कृतिकलगायतका हरेक पक्षबाट निकै कमजोर नागरिकका रूपमा रहेका छन् । सबै नागरिकलाई हुनेगरी गरिएका कानुनी व्यवस्थाले अपाङ्गता भएका व्यक्तिहरू समानरूपमा लाभान्वित हुनसक्ने अवस्था रहँदैन ।

त्यसैले, अपाङ्गता भएका नागरिकलाई अगाडि ल्याउन राज्यले अपाङ्गता भएका व्यक्तिलगायत अन्य सीमान्तकृत वर्गलाई विशेष कानुन निर्माण गरेर विशेष किसिमको व्यवस्था र सेवा-सुविधाका अधिकार प्रदान गरी समाजमा उनीहरूलाई पनि सक्षम, समृद्ध र आत्मनिर्भर बनाउनुपर्छ भनेर यो व्यवस्था गरिएको हो ।

## धारा २४ : छुवाछूत तथा भेदभावविरुद्धको हक

### धारा २४ को उपधारा १ मा भएको व्यवस्था

कुनै पनि व्यक्तिलाई निजको उत्पत्ति, जात, जाति, समुदाय, पेशा, व्यवसाय वा शारीरिक अवस्थाको आधारमा कुनै पनि निजी तथा सार्वजनिक स्थानमा कुनै प्रकारको छुवाछूत वा भेदभाव गरिनेछैन ।

**व्याख्यात्मक टिप्पणी**

हाम्रो समाजमा अझै पनि जात, जाति आदिका आधारमा मानिसलाई विभेद गर्ने गरिएको पाइन्छ । अपाङ्गता भएका व्यक्तिहरूलाई पनि अपाङ्गताकै आधारमा विभेद गर्ने गरिन्छ । जस्तैः विद्यालय वा सार्वजनिक स्थानमा अपाङ्गता भएका व्यक्तिहरूसँग बस्दा, रहँदा अपाङ्गता कुनै रोग हो, यो सर्न सक्छ भनी उनीहरूलाई अलग्याउने, कतै कतै त विद्यालयमा भर्ना गर्न नमान्ने गरेको पनि पाइन्छ । यस्ता

किसिमका विभेद रोक्न यो धाराको व्यवस्था गरिएको हो । अब कसैले अपाङ्गताकै आधारमा अपाङ्गता भएका व्यक्तिहरूलाई विभेद गर्दछ भने यो व्यवस्थाका आधारमा संवैधानिक हक हनन भएको भनी उजुरी दिन सकिन्छ र त्यसरी विभेद गर्ने व्यक्तिले सजायको भागिदार बन्नुपर्ने हुनसक्छ ।

## धारा २४ को उपधारा ३ मा भएको व्यवस्था

उत्पत्ति, जात, जाति वा शारीरिक अवस्थाको आधारमा कुनै व्यक्ति वा समुदायलाई उच्च वा नीच दर्शाउने, जात, जाति वा छुवाछूतको आधारमा सामाजिक भेदभावलाई न्यायोचित ठान्ने वा छुवाछूत तथा जातीय उच्चता वा घृणामा आधारित विचारको प्रचार प्रसार गर्न वा जातीय विभेदलाई कुनै पनि किसिमले प्रोत्साहन गर्न पाइनेछैन ।

### व्याख्यात्मक टिप्पणी

हाम्रो समाजमा एकले अर्कालाई होच्याउने वा सामाजिकरूपमा भेदभाव गर्ने, जात जातिबीच उच निच भनेर एकले अर्कालाई होच्याउने, घृणा गर्ने प्रचलन अझै ब्याप्त छ । कहिले काहीं व्यक्ति आफैंले कसैलाई होच्याउने नगरे पनि अरूलाई उस्काएर समाजमा होच्याउने, घृणा द्वेश फैलाउने आदि गर्ने गरेको पाइन्छ ।

यस्ता निन्दनीय कार्य रोक्न र सबै नागरिकको नैसर्गिक मानव अधिकारको सम्मान गर्नुपर्ने हुन्छ । कसैले पनि कसैमाथि घृणा वा विभेद गर्न पाइनेछैन भन्ने मनसायले यो धाराको व्यवस्था भएको हुनुपर्छ ।

## धरा २४ को उपधारा उपधारा ५ मा भएको व्यवस्था

यस धाराको प्रतिकूल हुनेगरी भएका सबै प्रकारका छुवाछूत तथा भेदभावजन्य कार्य गम्भीर सामाजिक अपराधका रूपमा कानुनबमोजिम दण्डनीय हुनेछन् र त्यस्तो कार्यबाट पीडित व्यक्तिलाई कानुनबमोजिम क्षतिपूर्ति पाउने हक हुनेछ ।

**व्याख्यात्मक टिप्पणी**

कसैलाई छुवाछूत गर्ने, व्यक्तिको जात, धर्म, लिङ्ग, वर्ण आदिका आधारमा भेदभाव गर्ने जस्ता काम गर्न पाइँदैन । कसैले यस्तो काम गर्छ भने कानुन अनुसार सजाय हुन्छ ।

अपाङ्गता भएका व्यक्तिहरूलाई यस किसिमको विभेद भयो भने सहेर बस्ने गरेको पाइन्छ । यस संविधानको भावना अनुसार अपाङ्गता भएका नागरिकलाई यस किसिमको विभेद भयो भने सहेर बस्नुहुँदैन, आफ्नो संवैधानिक अधिकार हनन भयो भनेर उजुरी गर्न सकिन्छ ।

# धारा ३१: शिक्षा सम्बन्धी हक

## धारा ३१ को उपधारा ३ मा भएको व्यवस्था

अपाङ्गता भएका र आर्थिकरूपले विपन्न नागरिकलाई कानुनबमोजिम नि:शुल्क उच्च शिक्षा पाउने हक हुनेछ ।

**व्याख्यात्मक टिप्पणी**

शिक्षा मानव जीवनको अभिन्न अङ्ग हो । शिक्षाबिना मानव जीवनको यात्रा अपूरो हुन्छ । त्यसैले, जुनसुकै वर्ग वा समुदायका मानिसलाई पनि शिक्षा नभई नहुने अपरिहार्य चिज हो । अपाङ्गता भएका व्यक्तिहरूलाई शिक्षा प्राप्त गर्न कुनै बाधा व्यवधान नहोस् भनेर यो संविधान आउनुभन्दा

अगाडि पनि अपाङ्ग संरक्षण तथा कल्याण ऐन, २०३९ को दफा ६ मा निःशुल्क शिक्षाको व्यवस्था गरिएको थियो । तर, यो कार्यान्वयन नभएका कारणले गर्दा सर्वोच्च अदालतमा रिट निवेदन दर्ता गर्नुपरेको थियो ।

कुनै पनि राज्यमा शिक्षा, स्वास्थ्य र सामाजिक सुरक्षा जस्ता कुरा राज्यको दायित्वभित्र पर्छन् । यो संविधानले शिक्षालाई राज्यको दायित्वभित्र राखेको छ । समाजमा सबैभन्दा पछाडि पारिएका र कमजोर नागरिकका लागि शिक्षा निःशुल्क गराउन संविधानमै व्यवस्था गर्नुभनेको राज्यले नागरिकप्रतिको दायित्व वहन गर्न खोजेको देखिन्छ । यी अधिकार संविधानमा मात्र भएर हुँदैन, यसलाई कार्यान्वयनमा ल्याउन ऐन, नियमावलीमा पनि उल्लेख हुनुपर्छ । त्यसका लागि हकवालाहरू सक्रिय भएर लाग्नुपर्छ । अनिमात्र यो अधिकार कार्यान्वयन हुनसक्छ ।

## धारा ३१ को उपधारा ४ मा भएको व्यवस्था

दृष्टिविहीन नागरिकलाई ब्रेललिपि तथा बहिरा र स्वर वा बोलाइसम्बन्धी अपाङ्गता भएका नागरिकलाई साङ्केतिक भाषाको माध्यमबाट कानुनबमोजिम नि:शुल्क शिक्षा पाउने हक हुनेछ ।

### व्याख्यात्मक टिप्पणी

बहिरा व्यक्तिले साङ्केतिक भाषामा र दृष्टिविहीन व्यक्तिले ब्रेल वा उपयुक्त नवीनतम प्रविधिका माध्यमबाट पढ्न पाउनु उनीहरूको मौलिक मानव अधिकारको हकभित्र पर्छ । यस अधिकारलाई संविधानको मौलिक हकभित्रै संरक्षण गर्नु निकै सराहनीय कुरा हो ।

यस धारामा 'बहिरा, दृष्टिविहीन र स्वर वा बोलाइसम्बन्धी' भन्ने उल्लेख गरिएको छ । यहाँ उल्लेखित स्वर वा बोलाइ भन्ने शब्दावलीको सट्टा सुनाइ तथा बोलाइसम्बन्धी अपाङ्गता उल्लेख गरिनुपर्छ भनेर

पटक पटक सरोकारवालाहरूले संविधान निर्माणका क्रममा अनुरोध गर्दा पनि यी शब्दावली परिवर्तन हुन सकेनन् । त्यसैले यसलाई सुनाइ तथा बोलाइसम्बन्धी भन्ने बुझ्नुपर्ने हुन्छ भने भविष्यमा संविधान संशोधन हुँदाका वखतमा यी शब्दावलीलाई सच्याउनुपर्ने देखिन्छ ।

हुन त यी अधिकार नीति–नियम र कानुनमा राखेर राज्यबाट कार्यान्वयन गर्ने प्रतिबद्धता जाहेर गर्न पनि सकिन्थ्यो तर पनि ब्रेललिपिमा पढ्न र साङ्केतिक भाषामा पढ्न पाउने अधिकारलाई संविधानमै संरक्षण गरिनुका पछाडि संविधान निर्माताले यो सवाललाई निकै महत्व दिएको देखिन्छ ।

अपाङ्गता भएका विद्यार्थीमध्ये बहिरा व्यक्तिले साङ्केतिक भाषामा र दृष्टिविहीन व्यक्तिले ब्रेललिपिमा पढ्न पाउने अधिकारको सम्मान नभएको अवस्थामा अब यो व्यवस्थाले समयमा पाठ्यपुस्तक नपाउँदा साङ्केतिक भाषामा पढ्न नपाउँदा हकवालाहरू कानुनी उपचारमा जान पनि थप संवैधानिक अवसर मिलेको छ ।

## धारा ३९ : बालबालिकाको हक

### धारा ३९ को उपधारा ९ मा भएको व्यवस्था

असहाय, अनाथ, अपाङ्गता भएका, द्वन्द्व पीडित, विस्थापित एवं जोखिममा रहेका बालबालिकालाई राज्यबाट विशेष संरक्षण र सुविधा पाउने हक हुनेछ ।

**व्याख्यात्मक टिप्पणी**

कुनै पनि राज्यभित्र बसोवास गर्ने जुनसुकै वर्ग, समुदाय वा अवस्थाका नागरिक राज्यविहीनताको अवस्थामा हुनुहुँदैन । यसो हुनुभनेको मानव अधिकारको सिद्धान्तविपरीत हुन्छ । अहिले पनि हाम्रो समाजमा कतिपय अवस्थामा बालबालिका अभिभावक वा राज्यविहीनताको अवस्थामा रहेका

छन् । जस्तैः सडक बालबालिका, परिवारबाट परित्यक्त जेष्ठ नागरिक आदि ।

अपाङ्गता भएका बालबलिका पनि कतिपय अवस्थामा अभिभावकविहीन हुनेगरेका कैयन् उदाहरण हामी पाउँछौं । विशेषगरी अपाङ्गता भएका बालबालिकामा अति अशक्त, पूर्ण अशक्त, बौद्धिक अपाङ्गता, अटिजम वा डाउनसिन्ड्रोम अपाङ्गता भएका बालबालिका बाबु आमाको शेषपछि पूर्णरूपमा बेसहारा हुनेगरेका छन् ।

यस किसिमको राज्यविहीनताको अवस्था नहोस् भनेर नै यो व्यवस्था गरिएको हो । यी र यस्तै बालबालिकालाई राज्यविहीनताको अवस्था नहोस् भन्नका लागि राज्यबाट विशेष संरक्षणको व्यवस्था गरिने छ भनिएको हो ।

## धारा ४२ : सामाजिक न्यायको हक

### धारा ४२ को उपधारा १ मा भएको व्यवस्था

सामाजिकरूपले पछाडि परेका महिला, दलित, आदिवासी, आदिवासी जनजाति, मधेशी, थारू, अल्पसङ्ख्यक, अपाङ्गता भएका व्यक्ति, सीमान्तीकृत, मुस्लिम, पिछडा वर्ग, लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक, युवा, किसान, श्रमिक, उत्पीडित वा पिछडिएको क्षेत्रका नागरिक तथा आर्थिकरूपले विपन्न खस आर्यलाई समावेशी सिद्धान्तका आधारमा राज्यको निकायमा सहभागिताको हक हुनेछ ।

**व्याख्यात्मक टिप्पणी**

यो धाराले सबैभन्दा बढी राज्यका निकायमा सीमान्तकृत समुदायको सहभागिताको विषयमा जोड दिएको छ । सदियौंदेखिको विभेद र दलनका कारण हाम्रो समाजमा सबैभन्दा सीमान्तकृतरूपमा रहँदै आएका वर्गहरू जस्तैः महिला, दलित, आदिवासी, आदिवासी जनजाति, मधेशी, थारू, अल्पसङ्ख्यक, अपाङ्गता भएका व्यक्ति, सीमान्तकृत, मुस्लिम,

पिछडा वर्ग, लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक, युवा, किसान, श्रमिक, उत्पीडित वा पिछडिएको क्षेत्रका नागरिक राज्यका महत्वपूर्ण नियकायमा सहभागी हुन घोषित वा अघोषितरूपबाट वञ्चित हुँदै आएको अवस्था पनि छ ।

यस्तो अवस्थालाई परिवर्तन गर्न संविधानको यो धाराले जति पनि सीमान्तकृत समुदाय छन्, तिनलाई राज्यका हरेक निकायमा सहभागी हुन समान हक हुनेछ, कसैले कुनै पनि बहानामा विभेद वा वञ्चित गर्न/गराउन पाउने छैन भन्ने यस धाराको आशय हो ।

यो धारमा अपाङ्गता भएका व्यक्तिहरूलाई पनि सीमान्तकृत र पाखा पारिएका वर्गको रूपमा लिइएको छ । अहिले पनि राज्यका महत्वपूर्ण निकायमा अपाङ्गता भएका व्यक्तिहरूको सहभागिता भएको हामी पाउँदैनौं । त्यसैले यो व्यवस्थाले अपाङ्गता भएका व्यक्तिहरूको राज्यका निकायमा सहभागिता प्रवर्द्धन गर्नेछ । तर, अधिकार कानुनमा लेखिएरमात्र हुँदैन, त्यसका लागि एकातिर अधिकार प्राप्त गर्न सक्नेगरी हकवालाहरूको क्षमता विकास गर्नु जरुरी हुन्छ भने अर्कोतिर हकवालाले अधिकारको दाबी गर्न सक्ने पनि हुनुपर्छ ।

## धारा ४२ को उपधारा ३ मा भएको व्यवस्था

अपाङ्गता भएका नागरिकलाई विविधताको पहिचानसहित मर्यादा र आत्मसम्मानपूर्वक जीवनयापन गर्न पाउने र सार्वजनिक सेवा तथा सुविधामा समान पहुँचको हक हुनेछ ।

### व्याख्यात्मक टिप्पणी

हरेक मानिसमा आ–आफ्नै क्षमता, अवस्था र विविधता रहेको हुन्छ । यो विविधता विशेषगरी अपाङ्गता भएका व्यक्तिहरूमा हुनेगर्छ । जस्तैः अपाङ्गताको वर्गीकरण अनुसार, अपाङ्गताको प्रकृति अनुसार अपाङ्गता भएका व्यक्तिहरूको विविधता हुनेगरेको छ । अपाङ्गताको

विविधता अनुसारै अपाङ्गता भएका व्यक्तिहरूका आवश्यकता पनि फरक फरक हुनेगर्छन् । अपाङ्ता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि, सन् २००६ मा पनि विवधता र भिन्नतालाई स्वीकार गर्नुपर्छ भन्ने उल्लेख छ ।

त्यसैले, अपाङ्गताको विविधता अनुसार आत्मसम्मानको पहिचानका साथ हरेक सार्वजनिक सेवा सुविधाहरूमा पहुँचको प्रत्याभूति (ग्यारेन्टी) यस धाराले गरेको छ ।

## धारा ४२ को उपधारा ५ मा भएको व्यवस्था

नेपालमा अग्रगामी लोकतान्त्रिक परिवर्तनका लागि भएका सबै जन-आन्दोलन, सशस्त्र सङ्घर्ष र क्रान्तिका क्रममा जीवन उत्सर्ग गर्ने शहीदका परिवार, बेपत्ता पारिएका व्यक्तिका परिवार, लोकतन्त्रका योद्धा, द्वन्द्व पीडित र विस्थापित, अपाङ्गता भएका व्यक्ति, घाइते तथा पीडितहरूलाई न्याय एवं उचित सम्मानसहित शिक्षा, स्वास्थ्य, रोजगारी, आवास र सामाजिक सुरक्षामा कानुनबमोजिम प्राथमिकताका साथ अवसर पाउने हक हुनेछ ।

### व्याख्यात्मक टिप्पणी

मुलुकमा अहिले भएको राजनीतिक परिवर्तन हामीले जुनरूपमा देखेका छौं, त्यो सबै परिवर्तन एकै दिन वा एकै रातमा भएको होइन । यो परिवर्तन गर्नमा सबै नेपालीको योगदान छ । विभिन्न समयमा भएका राजनीतिक परिवर्तनका आन्दोलन वा सशस्त्र सङ्घर्षका कारणले गर्दा हजारौंको सङ्ख्यामा मानिस घाइते, अङ्गभङ्ग भई अपाङ्गताको अवस्थामा पुगेका छन् ।

परिवर्नतका लगि समग्र जीवन समर्पण गर्ने व्यक्ति, जो आफ्नो शारीरिक अवस्थाको क्षति भई कठिनरूपमा जीवन बिताउन वाध्य छन्,

उनीहरूका हकमा कानुनबमोजिम सामाजिक सुरक्षा प्राप्त गर्ने हक हुनेछ भनिएको हो।

## धारा ४३ : सामाजिक सुरक्षाको हक मा भएको व्यवस्था

आर्थिकरूपले विपन्न, अशक्त र असहाय अवस्थामा रहेका, असहाय एकल महिला, अपाङ्गता भएका, बालबालिका, आफ्नो हेरचाह आफैं गर्न नसक्ने तथा लोपोन्मुख जातिका नागरिकलाई कानुनबमोजिम सामाजिक सुरक्षाको हक हुनेछ ।

### व्याख्यात्मक टिप्पणी

समाजमा सबै नागरिकको आर्थिक र सामाजिक अवस्था एकै किसिमको हुँदैन । आर्थिक र सामाजिक अवस्था एउटै नभएका नागरिक समाजमा अन्य नागरिकसरह सक्षमताका साथ रहन सक्दैनन् । यस्तो अवस्थामा कतिपय नागरिकलाई त जीवन निर्वाह गर्नै समस्या रहेको हुन्छ । यस्तो अवस्थामा राज्यले त्यस्ता नागरिकलाई सामाजिक सुरक्षाको विशेष व्यवस्था गर्नुपर्छ ।

समाजमा आर्थिकरूपमा विपन्न वा अन्य कारणले कमजोर भएका नागरिकको सुरक्षाका लगि राज्यले दिने सेवा सुविधालाई सामाजिक सुरक्षा भनिन्छ । यस्तो किसिमको सामाजिक सुरक्षा रोजागारी दिएर वा निश्चित आर्थिक, सामाजिक सुरक्षा भत्ताको रूपमा दिएर होस् वा आवासको व्यवस्था गरेर होस्, दिने गरिन्छ ।

नेपाल सरकारले विशेषगरी रातो परिचयपत्र प्राप्त गर्ने 'क' वर्गका र नीलो परिचयपत्र प्राप्त गर्ने 'ख' वर्गका अपाङ्गता भएका व्यक्तिहरूलाई सामाजिक सुरक्षा भत्ता दिंदै आएको छ ।

# भाग - ४

## राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व

### धारा ५१(ज) : नागरिकका आधारभूत आवश्यकतासम्बन्धी नीतिको उपधारा (१४)

यातायात सुविधानमा नागरिकहरूको सरल, सहज र समान पहुँच सुनिश्चित गर्दै यातायात क्षेत्रमा लगानी अभिवृद्धि गर्ने र वातावरण अनुकूल प्रविधिलाई प्राथमिकता दिंदै सार्वजनिक यातायातलाई प्रोत्साहन र निजी यातायातलाई नियमन गरी यातायात क्षेत्रलाई सुरक्षित, व्यवस्थित र अपाङ्गता भएका व्यक्ति अनुकूल बनाउने,

**ब्याख्यात्मक टिप्पणी**

राज्यमा निर्मित हरेक सार्वजनिक संरचना सबै नागरिकले समानरूपमा उपभोग गर्न पाउनुपर्छ । मानव निर्मित वा मानवबाट श्रृजित कुनै पनि संरचनाले कसैलाई विभेद गर्नुहुँदैन भन्ने संविधानको भावना देखिन्छ ।

तर, हाम्रो समाजमा बनेका सबै सार्वजनिक संरचना अपाङ्गता भएका नागरिकका हकमा अमैत्री रहेका छन् । उदाहरणका लागि विशेषगरी सार्वजनिक भौतिक संरचना, सार्वजनिक यातायात सबै अपाङ्गता भएका व्यक्तिहरूले प्रयोग गर्न सक्नेगरी सहज पहुँच पुग्नेखालका छैनन् । त्यसैले यातायात र सार्वजनिक क्षेत्रहरू अपाङ्गतामैत्री हुनुपर्छ भनिएको हो ।

# भाग - ८

## सङ्घीय व्यवस्थापिका

## धारा ८४ : प्रतिनिधिसभाको गठन

### धारा ८४ को उपधारा २ मा भएको व्यवस्था

समानुपातिक निर्वाचन प्रणालीबमोजिम हुने प्रतिनिधिसभाको निर्वाचनका लागि राजनीतिक दलले उम्मेदवारी दिंदा जनसङ्ख्याको आधारमा महिला, दलित, आदिवासी जनजाति, खस आर्य, मधेशी, थारू, मुस्लिम, पिछडिएको क्षेत्रसमेतबाट बन्दसूचीका आधारमा प्रतिनिधित्व गराउने व्यवस्था सङ्घीय कानुनबमोजिम हुनेछ । त्यसरी उम्मेदवारी दिंदा प्रादेशिक सन्तुलनलाई समेत ध्यान दिनुपर्नेछ ।

### धारा ८४ को उपधारा ३ मा भएको व्यवस्था

उपधारा २ बमोजिम राजनीतिक दलले उम्मेदवारी दिंदा अपाङ्गता भएको व्यक्तिको समेत प्रतिनिधित्व हुने व्यवस्था गर्नुपर्नेछ ।

**व्याख्यात्मक टिप्पणी**

लोकतान्त्रिक गणतन्त्रको स्थापना भइसक्दा पनि अपाङ्गता भएका व्यक्तिहरूको राजनीतिक सहभागितालाई उपेक्षा गर्ने गरिएको छ । राजनीतिक दल वा राजनीतिक नेताहरूले अपाङ्गता भएका व्यक्तिहरू राजनीतिक चरित्रका हुँदैनन् भन्ने जस्तो व्यवहार गर्ने गरेको पाइन्छ ।

राजनीतिमा अपाङ्गता भएका व्यक्तिहरूको सहभागिताको सवाल उठ्नेबित्तिकै अपाङ्ता भएका व्यक्तिहरूलाई राजनीतिबाट अलग गर्ने प्रयास गरिन्छ । अपाङ्ता भएका व्यक्तिहरू राजनीतिक चरित्रका भन्दा पनि सामाजिक सुरक्षासँग मात्र सम्बन्धित हुन्छन्, शिक्षा आर्जन,

रोजगारी वा सामाजिक सुरक्षा जस्ता कुरा अपाङ्गता भएका व्यक्तिहरूका आधारभूत कुरा हुन् भन्ने गरिएको छ ।

नेपालको संविधान (२०७२) आउनुभन्दा अगाडि अपाङ्गता भएका व्यक्तिहरूको राजनीतिक अधिकारलाई संविधान र कानुनमा संस्थागत गरिएको थिएन । त्यसैका कारणले गर्दा अपाङ्गता भएका व्यक्तिहरूको राजनीतिक सहभागिताको अवस्था निकै कमजोर रहेको थियो ।

गणतान्त्रिक नेपालको संविधानले अपाङ्गता भएका व्यक्तिहरूको राजनीतिक अधिकारलाई संस्थागत गरेको छ । यस धारा ८४ (३) को व्यवस्थाले अब दलहरू अपाङ्ता भएका व्यक्तिहरूलाई चुनावमा उम्मेदवार बनाउन बाध्य हुनेछन् । यो व्यवस्थाले नेपालको संवैधानिक इतिहासमा अपाङ्गता भएका व्यक्तिहरूको राजनीतिक अधिकारलाई मूलप्रवाहीकरण गरेको छ । अब यो अधिकार प्रयोग गर्न हरेक दलमा आबद्ध अपाङ्ता भएका व्यक्तिहरू सक्रियरूपमा लाग्नु अपरिहार्य रहेको छ ।

## धारा ८६. राष्ट्रियसभाको गठन र सदस्यहरूको पदावधि

### धार ८६ को उपधारा २ मा भएको व्यवस्था

राष्ट्रियसभामा देहायबमोजिमका उनान्साठी सदस्य रहनेछन् :

(क) प्रदेशसभाका सदस्य, गाउँपालिकाका अध्यक्ष र उपाध्यक्ष तथा नगरपालिकाका प्रमुख र उपप्रमुख रहेको निर्वाचक मण्डलद्वारा सङ्घीय कानुनबमोजिम प्रदेशसभाका सदस्य, गाउँपालिकाका अध्यक्ष र उपाध्यक्ष तथा नगरपालिकाका प्रमुख र उपप्रमुखको

मतको भार फरक हुनेगरी प्रत्येक प्रदेशबाट कम्तीमा तीन जना महिला, एक जना दलित र एक जना अपाङ्गता भएका व्यक्ति वा अल्पसङ्ख्यकसहित आठ जना गरी निर्वाचित छपन्न जना ।

**व्याख्यात्मक टिप्पणी**

यो संविधानले केन्द्रमा प्रतिनिधिसभा र राष्ट्रियसभा गरी दुई वटा सदनको परिकल्पना गरेको छ । यसरी राष्ट्रियसभामा प्रतिनिधित्व गर्न/गराउनका लागि ५६ सिटको व्यवस्था गरेको छ । यी ५६ सिटमध्ये प्रत्येक प्रदेशबाट १ जना अपाङ्गता भएको व्यक्ति वा अल्पसङ्ख्यकसहित ८ जना निर्वाचन गर्ने भन्ने उल्लेख गरिएको छ । यो अधिकारलाई हेर्दा १ जना अपाङ्गता भएका व्यक्तिले राष्ट्रियसभामा प्रतिनिधित्व गर्ने व्यवस्था देखिन्छ ।

सरसरती हेर्दा राष्ट्रियसभामा १ जनामात्र अपाङ्ता भएका व्यक्तिको सहभागिता हुने जस्तो देखिन्छ । संविधानले गरेको बाध्यात्मक व्यवस्था १ जनामात्र भए पनि हरेक राजनीतिक दलमा क्रियाशील अपाङ्गता भएका व्यक्तिहरू सक्रियरूपमा लागेर हरेक दलमा कडा पैरवी (लबिङ) गर्ने हो भने ८ जनाभन्दा बढी नै राष्ट्रियसभामा सहभागी हुने अवसर रहेको छ । त्यसैले, यो राष्ट्रियसभामा १ जनाभन्दा बढी सिट लिनका लागि दलमा आबद्ध अपाङ्गता भएका व्यक्तिहरूको क्रियाशीलतामा भरपर्छ ।

# भाग - १४

## प्रदेश व्यवस्थापिका

## धारा १७६ : प्रदेशसभाको गठन

### धारा १७६ को उपधारा ६ मा भएको व्यवस्था

समानुपातिक निर्वाचन प्रणालीबमोजिम हुने प्रदेशसभाको निर्वाचनका लागि राजनीतिक दलले उम्मेदवारी दिंदा जनसङ्ख्याको आधारमा महिला, दलित, आदिवासी जनजाति, खस आर्य, मधेशी, थारू, मुस्लिम, पिछडिएको क्षेत्र, अल्पसङ्ख्यक समुदायसमेतबाट बन्दसूचीका आधारमा प्रतिनिधित्व हुने व्यवस्था सङ्घीय कानुनबमोजिम हुनेछ । त्यसरी उम्मेदवारी दिंदा सम्बन्धित प्रदेशको भौगोलिक सन्तुलनलाई समेत ध्यान दिनुपर्नेछ ।

### धारा १७६ को उपधारा ७ मा भएको व्यवस्था

उपधारा (६) बमोजिम राजनीतिक दलले उम्मेदवारी दिंदा अपाङ्गता भएका व्यक्तिको समेत प्रतिनिधित्व हुने व्यवस्था गर्नुपर्नेछ ।

**व्याख्यात्मक टिप्पणी**

धारा १७६ को उपधारा ६ मा प्रदेशसभा गठन गर्दा समानुपातिक निर्वाचन प्रणाली अनिवार्य अपनाउनुपर्ने हुन्छ । त्यस्तो समानुपातिक निर्वाचन प्रणालीबमोजिम हुने प्रदेशसभाको निर्वाचनका लागि राजनीतिक दलले उम्मेदवारी दिंदा जनसङ्ख्याको आधारमा महिला, दलित, आदिवासी जनजाति, खस आर्य, मधेशी, थारू, मुस्लिम, पिछडिएको क्षेत्रसमेतबाट बन्दसूचीका आधारमा प्रतिनिधित्व गराउने व्यवस्था सङ्घीय कानुनबमोजिम हुनेछ । त्यसरी उम्मेदवारी दिंदा सम्बन्धित प्रदेशको भौगोलिक सन्तुलनलाई समेत ध्यान दिनुपर्नेछ ।

माथि उल्लेखित वर्गहरूबाट दलहरूले बन्दसूचीमा उम्मेदवारी दिंदा अपाङ्गता भएका व्यक्तिहरूको प्रतिनिधित्व हुने व्यवस्था गर्नुपर्नेछ भनिएको छ । यो अधिकार प्रयोग गर्नका लागि यस क्षेत्रका अभियन्ताहरूले निर्वाचनसम्बन्धी कानुन निर्माण हुँदा होस् वा अन्य निर्वाचनसम्बन्धी नियमावली वा विनियमावली बनाउँदा होस्, यस व्यवस्था अनुसार अपाङ्गताको सवाल समावेश गराउन निरन्तर वकालत गर्नुपर्ने देखिन्छ ।

## भाग - २७

## अन्य आयोगहरू

### धारा २५८ : राष्ट्रिय समावेशी आयोग

धारा २५८ को उपधारा ६ मा भएको व्यवस्था

देहायको योग्यता भएको व्यक्ति राष्ट्रिय समावेशी आयोगको अध्यक्ष वा सदस्य पदमा नियुक्ति हुन योग्य हुनेछ ।

क) कम्तीमा १० वर्ष सामाजिक समावेशीकरण, अपाङ्गता भएका व्यक्ति, अल्पसङ्ख्यक एवं सीमान्तकृत समुदाय तथा पिछडिएको क्षेत्र र वर्गको हक हित वा विकास वा मानव अधिकारको क्षेत्रमा महत्वपूर्ण योगदान पुऱ्याएको,

ख) अध्यक्षको हकमा मान्यता प्राप्त विश्वविद्यालयबाट स्नातक उपाधि हासिल गरेको,

ग) पैँतालिस वर्ष पूरा गरेको,

घ) नियुक्ति हुँदाको बखत कुनै पनि राजनीतिक दलको सदस्य नरहेको,

ङ) उच्च नैतिक चरित्र भएको ।

### धारा २५९ : राष्ट्रिय समावेशी आयोगको काम, कर्तव्य र अधिकार

खस आर्य, पिछडा वर्ग, अपाङ्गता भएका व्यक्ति, ज्येष्ठ नागरिक, श्रमिक, किसान, अल्पसङ्ख्यक एवं सीमान्तकृत समुदाय तथा पिछडिएको वर्ग र कर्णाली तथा आर्थिकरूपले विपन्न वर्गलगायतका समुदायको हक अधिकारको संरक्षणका लागि अध्ययन, अनुसन्धान गर्ने ।

खण्ड (क) मा उल्लेखित समुदाय, वर्ग र क्षेत्रको समावेशीकरणका लागि नेपाल सरकारले अवलम्बन गरेको नीति तथा कानुनको कार्यान्वयनको अवस्थाको अध्ययन गरी सुधारका लागि नेपाल सरकारलाई सुझाव दिने ।

खण्ड (क) मा उल्लेखित समुदाय, वर्ग र क्षेत्रको राज्य संयन्त्रमा उचित प्रतिनिधित्व भए/नभएको अध्ययन गरी त्यस्तो समुदाय, वर्ग र क्षेत्रको प्रतिनिधित्वको लागि गरिएको विशेष व्यवस्थाको पुनरावलोकन गर्न नेपाल सरकारलाई सुझाव दिने ।

खण्ड (क) मा उल्लेखित समुदाय, वर्ग र क्षेत्रको संरक्षण, सशक्तीकरण र विकास सन्तोषजनक भए/नभएको अध्ययन गरी भविष्यमा अवलम्बन गर्नुपर्ने नीतिको सम्बन्धमा नेपाल सरकारसमक्ष सिफारिस गर्ने ।

**व्याख्यात्मक टिप्पणी**

यस धारामा समावेशी आयोगको परिकल्पना गरिएको छ । यसरी समावेशी आयोग गठन गर्दा अध्यक्ष वा सदस्य अपाङ्गता भएका व्यक्तिहरूको समुदायबाट पनि चयन गर्न सकिने कुरा उल्लेख गरिएको छ ।

# अनुसूची - ८

**(धारा ५७ को उपधारा (४), धारा २१४ को उपधारा (२), धारा २२१ को उपधारा (२) र धारा २२६ को उपधारा (१) सँग सम्बन्धित)**

**स्थानीय तहको अधिकारको सूचीको क्रमसङ्ख्या १६ मा भएको व्यवस्था**

जेष्ठ नागरिक, अपाङ्गता भएका व्यक्ति र अशक्तहरूको व्यवस्थापन

### व्याख्यात्मक टिप्पणी

स्थानीय तहमा रहेका स्थानीय निकायहरूले काम गर्दा यो संविधान अनुसार ज्येष्ठ नागरिक, अपाङ्गता भएका व्यक्ति र अशक्तहरूको व्यवस्थापन स्थानीय निकायहरूले गर्नुपर्दछ भनिएको छ । तथ्याङ्क सङ्कलन, शिक्षा, स्वास्थ्य, रोजागरी र सामाजिक सुरक्षाको सवाल यसमा आकर्षित हुन आउँछ ।

# संविधान कार्यान्वयन गर्न सरोकारवालाहरूको भूमिका र दायित्व

संविधान मूल कानुन हो । यसले राज्यको शासन व्यवस्थालाई निर्देशन गर्छ । संविधान जति नै राम्रो बने पनि त्यसमा गरिएका व्यवस्था कार्यान्वयन गर्न ऐन, नियमावली, नीति, नियम र निर्देशिका बन्नुपर्दछ । संविधानमा भएका कुराहरू संविधान कार्यान्वयन गर्ने दस्तावेजहरूमा परेनन् भने संविधानमा भएका अधिकारहरू हकवालाहरूले प्राप्त गर्न सक्दैनन् ।

संविधान निर्माणपछि अहिले संविधान कार्यान्वयन गर्न/गराउन विभिन्न किसिमका कानुन निर्माणका क्रममा रहेका छन् । ती कानुन अपाङ्गतामैत्री बनाउन अब सरोकारवालाहरू कटिबद्ध भएर काम गर्नुपर्ने हुन्छ । भोलिका दिनमा केन्द्रीयस्तरमा मात्र नभई प्रदेशस्तरीय विधान कानुन बन्नेछन् । यी सबै कानुन र नीति नियमलाई अपाङ्गतामैत्री बनाउन सबै सरोकारवाला लाग्नु अपरिहार्य हुन आउँछ।




यो सामग्री स्वीडिस अन्तर्राष्ट्रिय विकास नियोग (सीडा) को आर्थिक सहयोगमा तयार गरिएको हो । यस सामग्रीमा व्यक्त विचारहरू प्रति सीडाले कुनै जिम्मेवारी लिदैन ।

राष्ट्रिय अपाङ्ग महासंघ नेपाल
NFD-N

MYRIGHT
EMPOWERS PEOPLE WITH DISABILITIES